चितवनको माडी बाट ई पेपरमा प्रकाशित हुने ........

# सरु अनलाईन ई-पेपर

सम्पर्क का लागी :
सरु अनलाईन ई-पेपर परिवार
मा न पा - ५, बसन्तपुर, माडी, चितवन
बसन्तपुर माडी चितवन
फोन नं ९८१५२७३९४४
ई-मेल : SARUONLINEEPAPER@GMAIL.COM

☼ बर्ष : १ ☼ अंक : १ ☼ २०७२ फाल्गुण २४ गते (आईतबार) ☼ (साप्ताहिक) ☼ पेज : ६ ☼

## दुई अवार्डका लागी भीड्दै माडीका सुन्दरीहरु



माडीमा आयोजना भइरहेको मिस माडी २०१६को फोटोजेनिक अवार्ड र मिस पर्सनालिटी अवार्डको नोमिसन भएको छ । प्रतियोगितामा सहभागि १० जना प्रतियोगिहरुले देशकै प्रसिद्ध धार्मिकस्थल देवघाटमा गएर दुई अर्वाडका लागी आफ्नो कला प्रस्तुत गरेका थिए । देवघाटमा रहेको रामजानकी वालिका आश्रममा गएर त्यहा आश्रित करिब १९ जना बालबालिकासंगको अन्तक्रिया र छलफलमा उनिहरुले मिस पर्सनालिटी अर्वाडका लागी आफुलाई तयार पारेका हुन । साथै देवघाटको सुन्दर स्थानको अवलोकन गदै उनिहरुले त्यहाको बिषयमा जानकारी लिएका थिए । मन्जरी ग्रुपले आयोजना गरेको मिस माडी २०१६को मल्टिमिडिया अर्वाडका लागी अहिले प्रतियोगिहरुले एसएमएस र वेभ साइट भोटिङ्ग मार्फत भोट मागि रहेका छन । कोरियोग्राफर बिशाल आले मगरले प्रशिक्षण दिइरहनु भएको मिस माडी २०१६को अफिसियल फोटोग्राफर नारायणगढको फोटो कन्सन, अफिसियल व्युटिपार्लर कस्मेरिना व्युटिपार्लर, अफिसियल क्राउन स्पोन्सर जय बिक्रम बाबा सुनचादि पसल बसन्तपुर माडी, अफिसियल एसएमएस पार्टनर मिराकल एसएमएस, अफिसियल टोकन अफ लभ शिखर पाटी प्यालेस रहेको छ । मिस माडी २०१६ को अफिसियल मिडिया रेडियो माडी १०७ दशमलव ६ रहेको छ ।

### मेरो कथा (लभ स्टोरी)

मान्छेले नछोएको भए त त्यो सुन्दर चन्द्रमामा पनि दाग लाग्दैनथ्यो होला तर पापी मान्छे आफ्नो स्वार्थको लागी जे पनि गर्दा रहेछन । पुरा रात भरी रक्सी ले टिल्ल परेर सुतेको थिए । उपाध्याय बाहुनको छोरो हु म । जात ले त नखा भन्थ्यो तर त्यो दिन जात का लागी खाएको थिईन मैले मात्र थियो साथी हरु संगको गेट टुगेदर......

( बाकीँ पेज नं. ३ मा )

### "हार्दिक श्रदान्जली तिम्रो यादको"



सर्बप्रथम,तिम्ले दिएको चिनो औंठि र फेसबुक का प्रत्येक स्टाटसमा प्रयोग हुने सानू आज बाट पुर्ण रुपमा अन्त्य भएको घोषणा गर्दछु ।तिम्रा यादमा पागल सधै भएर बस्न का लागी म कुनै महा-मुर्ख पनि त होई सानू । तिम्लाई थाहा छ, मेरो ममी, हजुरबुवा, हजुरआमा ले मेरो नाममा कति सपनाहरु देख्नु भएको छ । यदि तिम्रै यादमा पागल भएर आमा बुबाको ईच्छा पुरा नगर्ने हो भने पाप लाग्छ सानू मलाई त्यो आँसुको अनि त्यो मायाको । माफ गर सानू अब देखि म तिम्लाई घृणा गर्नेछु । थाहा होला नी सानू कस्ता मान्छे लाई घृणा गरीन्छ भनेर । त्यस्तो मान्छेलाई घृणा गरीदो रहेछ जसलाई धेरै माया गरीन्छ । तिम्रो नाम सुन्दा पनि रिसाउने बानी लगाएको छु अचेल । कारण यो हो की तिम्लाई गर्ने बनावटी धृणा ।

## माडीको बसन्तपुर बजारमा बृहत् साँगितिक उत्सव आयोजित




माडीको विकास हाम्रो अभियान, साँस्कृतिक सम्पदा हाम्रो पहिचान' भन्ने नारा सहित यही फाल्गुन २४, २५ र २६ गते माडीको बसन्तपुर बजारमा बृहत् साँगितिक उत्सव आयोजना गरिएको छ । माडी साँगितिक उत्सव – २०७२ मुल आयोजक समितिद्वारा आयोजना एवं व्यवस्थापन गरिने सो उत्सवमा लोकदोहोरी, पप, आधुनिक, लोकपप लगायतका बिधाका गीतसंगित तथा हाँस्यव्यङ्ग्यात्मक प्रहसन एवं नृत्य प्रस्तुतीहरु रहने छन् । लगातार तीनदिनसम्म सञ्चालन हुने सो उत्सव माडी उपत्यका लगायत चितवन र वरपरका क्षेत्रका संगित एवं कला पारखीहरुको तृष्णा मेटाउने तथा दोश्रो माडी महोत्सव आयोजनाको आधार तयारी गर्ने उद्देश्यसहित आयोजना गरिएको आयोजक समितिका संयोजक श्रीप्रसाद दवाडीले जनाउनुभयो । सो उत्सव कार्यक्रमको आधिकारिक मिडिया सामुदायिक रेडियो माडी एफ.एम. १०७.६ मेगाहर्ज रहेको छ भने टिकट सौजन्य सोनालिका टक्याक्टरको आधिकारिक बिक्रेता कमला एण्ड सन्स टकेडिङ सेन्टर भरतपुर चितवनले गरेको छ । साँगितिक उत्सवमा चर्चित हाँस्यव्यङ्ग्य कलाकार तथा अभिनेता मनोज गजुरेलको प्रहसनमुलक प्रस्तुतीसंगै चल्तीका लोकदोहोरी कलाकारहरु पशुपति शर्मा, राधिका हमाल, खुमन अधिकारी, शिरिष देवकोटा, रमिला न्यौपाने, नेत्रजी पन्त लगायतको प्रस्तुती रहने आयोजकले जनाएको छ । त्यसैगरी पप, आधुनिक, गजल, लोकपप लगायत अन्य क्षेत्रका गायक गायिकाहरु शिव परियार, रामचन्द्र काफ्ले, कमल के. क्षेत्री, रजिना रिमाल, सुगम पोख्रेल, जुनु रिजाल, विकास पाण्डे, संजय चौधरी आदिको समेत प्रस्तुती रहने तथा राष्टिकय एवं स्थानीय नर्तक नृत्याङ्गना तथा मिस माडीका प्रतिस्पर्धीहरुको विशेष प्रस्तुती समेत रहने आयोजक समितिले जानकारी दिएको छ । कलाकारको सहभागिता एवं समयावधीका दृष्टिकोणबाट सो उत्सव समकालीन माडीकै ठूलो साँगितिक कार्यक्रमका रुपमा रहने देखिएको छ ।

चितवनको माडी बाट ई पेपरमा प्रकाशित हुने ......
सरू अनलाईन ई-पेपर

कार्यकारी निर्देशक :
किशोर पौडेल (९८४५६७४३६५)
सम्पादक :
जिवन रानाभाट (९८१५२७३९४४)
सल्लाहकार :
बिशाल आले मगर
अशोक परियार
हिरा आले मगर
ईमेल : sauonlineepaper@gmail.com

## सम्पादकीय :

### प्रकाशकको आग्रह

चितवन को दुर्गम क्षेत्र मानिने माडी क्षेत्रमा पनि साहित्य तथा पत्रकारीताको बिकास संगै बिभिन्न पत्र-पत्रिका, साहित्यीक पत्रिका हरु प्रकाशित हुन लागेका छन । जतिसुकै साहित्यीक पत्रिका र समाचार मुलक पत्रिका हरु प्रकाशित भए पनि युवा पुस्ताका साहित्यीक लेख रचना तथा माडीका स्थानिय समाचार हरुलाई मुख्य प्राथमिकता भने दिएको पाईएको छैन । यसको अर्थ हामिले अथवा सरु अनलाईन ले नै यो सबै गर्छ भन्ने चाँही होईन तर केहि हद सम्म चाँही युवा पुस्ता लाई नै प्राथमिकता दिनेछ । सुरुवाती चरणमा ई-पेपर र तपाई हरुको माया पछि हामी पत्रिका नै निकाल्ने जानाकारी पनि गराउन चाहान्छौ । बच्चा हरु काँचो माटो हुन तिनिहरुलाई जस्तो बनाईन्छ, उनिहरु त्यस्तै हुन्छन भने जस्तै सरु अनलाईन पनि हअिले काँचो माटो हो । यसलाई फलाउने, फुलाउने तथा हर्काउने जिम्मा म तपाईहरु माझ छोड्दछु ।

## एसएलसीको तयारी पुरा, ६ लाख १५ हजार विद्यार्थी सहभागि हुँदै




यस वर्षको प्रवेशिका अर्थात् एसएलसी परीक्षाको तयारी पूरा भएको छ । परीक्षा नियन्त्रण कार्यालय सानोठिमीका परीक्षा नियन्त्रक कृष्णप्रसाद काप्रीले एसएलसी परीक्षाको तयारी पूरा भएको बताए।जनक शिक्षा सामग्री केन्द्रमा गोप्यरुपमा एसएलसीको प्रश्नपत्र छपाइसमेत बिहीबारबाट सकिएको बताउँदै उनले प्रश्नपत्रसमेत जिल्ला पठाएको बताए। उनले भने, 'परीक्षाका लागि आवश्यक पर्ने उत्तरपुस्तिका लगायतकासबै सामग्री सबै जिल्लामा पठाई सकिएको छ, प्रश्नपत्र पनि अधिकांश जिल्लामा पठाइसकिएको छ, बाँकी बागमतीका, दोलखा, सिन्धुपाल्चोकलगायत १० जिल्लामा पनि पठाउँदैछौं।'परीक्षामा यस वर्ष छ लाख १५ हजार विद्यार्थी सहभागी हुनेछन्। परीक्षा नियन्त्रण कार्यालयका उपनियन्त्रक अनुपमचन्द्र श्रेष्ठले नियमित र एक्जाम्टेड गरी छ लाख १२ हजार तथा प्राविधिकतर्फका तीन हजार विद्यार्थीले परीक्षामा सहभागी हुने जानकारी दिए। जसमा नियमिततर्फ चार लाख ५२ हजार ८८१ र एक्जाम्टेडतर्फ एक लाख ५९ हजार ४१७ विद्यार्थी सहभागी हुनेछन्।नियमिततर्फ प्राविधिकतर्फका ९९ विद्यालयका तीन हजार २५५ विद्यार्थी सहभागी हुँदैछन्। जसमा नियमिततर्फ दुई लाख २५ हजार ३४६ छात्र र दुई लाख २७ हजार ५३५ छात्रा सहभागी हुनेछन् । श्रेष्ठले सबैभन्दा बढी काठमाडौंमा ३५ हजार र सबैभन्दा कम मनाङमा ६९ जनाले परीक्षा दिने जानकारी दिए।यस वर्ष एसएलसी परीक्षाका लागि देशभर एक हजार ४४३ परीक्षा केन्द्र निर्धारण गरिएको छ। एसएलसीको नतिजा ग्रेडिङ सिस्टममा सार्वजनिक हुने भएकाले उत्तीर्णाङ्क उल्लेख नगरी प्रश्नपत्र छपाइ भएको कार्यालयले जनाएको छ।

## साप्ताहिक राशिफल :




**मेष :** कामसा प्रगती हुनेछ । सामाजीक काममारूची बढ्नेछ ।
**बृष :** धनको हानी । कार्यमा अवरोध । विवादमा पर्ने साम्भावना ।
**मिथुन :** अग्नि वहानको भय हुनेछ । प्रेममा झगडा पर्नेछ ।
**कर्कट :** परिवारमा सुख प्राप्त हुनेछ । जमिन प्राप्त हुनेछ ।
**सिंह :** आलस्यता पैदा हुनेछ । बैदेशिक यात्राको योग छ ।
**कन्या :** साथीभाईको सहयोग हात पर्ने। नविन कार्य सफल हुने ।
**तुला :** व्यवसाय मध्यम हुने । जिवनमा सुख छाउनेछ ।
**वृश्चिक:** शारिरिक कष्ट । कडा परिश्रम गर्नुपर्ला ।
**धनु :** शिक्षा क्षेत्रमा सफलता मिल्नेछ । प्रेममा धोका होला ।
**मकर :** तिर्थ यात्रामा रूची बढ्नेछ । भोजनको अवसर मिल्नेछ ।
**कुम्भ :** रमाईलो दिन छ । कार्यमा बाधा आउन सक्छ ।
**मिन :** अशुभ कुराहरू सुन्न पर्ला । दिन राम्रो छैन ।

मेरो कथा (लभ स्टोरी) ......... प्रदिप, जुन मेरो असाध्यै मिल्ने साथी अनि सागर चै कम मिल्दैनथ्यो। ट्वाईलेट जादा संगै जान नमिल्ने भएर होला नत्र हामी जतिबेला पनि संगै हुन्थ्यौ। घर नजिकै भए पनि धेरै जसो खाना संगै खान्थ्यौ। स्कुल, कलेज देखि हामी संगै बस्ने हिड्ने अनि खाने।साने देखि सुखी परीवारका हुर्केको हुनाले होला मलाई दु:ख के हो कहिल्यै पनि थाहा भएन। पिसल्याण्ड ई स्कुल जहा मैले नर्सरी पढेको थिए। सालको बुट मुनि बसेर पढिन्थ्यो। किनकि स्कुलको भवन निमार्णधिन अवस्था मा थियो। रामचन्द्र सर ले पढाउनुहुन्थ्यो। रूने लाई ल्याक्टो चकलेट दिनुहुन्थ्यो। मलाई अझै पनि याद छ म चकलेट खानकै लागी भए पनि रून्थे। सानोमा मेरो कपाल सुन जस्तै थियो रे अनि मलाई माया ले सुनकेशरी भुनी भन्ने गर्थे रे धर परिवार ले। स्कुलमा हुदा घरका कसै लाई देखे भने चिच्च्याई चिच्च्याई रून्थे रे। रातो हुन्थे रे रूदा। सम्झिदा पनि ज्यानै सिरिङ भएर आउछ। त्यो बालापन ऱ्रम्झेर होईन कि त्यो बालापनको माया सम्झेर। आफना दिदि बहिनि त थिएनन तपानी फुपु दिदि हरू हुनु हुन्थ्यो २ जना। सरस्वती अनि शान्ती। साच्चै आफनो दिदि बहिनि को अभाब कहिल्यै खड्किएन सानोमा। सरस्वती दिदि को बिहेमा मलाई हजुरबुबा ले ५ रूपैया दिदा म संसारकै सबैभन्दा खुसी र धनी मान्छे म नै हो जस्तो लागेको थियो। ६/७ बर्षको थिए होला म । पिपलगेडी चकलेट किनेर कट्टु को गाजीमा राख्दा कट्टु समातेर हिड्न पर्दथ्यो। सबै साथिहरू लाई चकलेट बाडेको थिए त्यो बेला दिदि को बिहेको खुसीयाली मा। सरस्वती दिदि को बिहे भएर गै सके पछि हामी घर मा हजुरबुबा, हजुरआमा, बुबा, ममी, शान्ती दिदि (कान्छी फुपु), म अनि भाई। शान्ती दिदि ले कटिङ सिक्नु हुन्थ्यो। हजुरबुबा ले एउटा कपडा सिलाउने मेसिन पनि किनेर ल्याईदिनु भएको थियो दिदि लाई। दिदि को कपडा सिलाउने मसिन को तल पटि मेसीन मै टासीएको एउटा सानो घर्रा थियो। जहा दिदि ले धागो अनि कसैको कपडा सिलाएर आएको पारीश्रमीक राख्नु हन्थ्यो। म सबै भन्दा बढि शान्ती दिदि संग मिल्थे तर मलाई थाहा थिएन कि दिदि ले त्यहा पैसा राख्नु हुन्छ भनेर। त्यो जमना मा कपाडमा सिलाएर कति पो आउथ्यो र २/५ रूपैया। दैनिक १ रूपैया चोर्ने गर्थे दिदि को घर्रा बाट तर दिदि ले पत्तै पाउनुहुदैनथ्यो। एक दिन पैसा झिक्दा झिक्दै दिदि ले देखेर मलाई मर्नी गरी पिटेको म कहिल्यै बिर्सिदिन होला। कति मन दुखेको थियो होला दिदि को। हजुरबुबा ले दिदि लाई पैसा दिनुहुन्थेन। दिदि ले आफैले मेहेनत गरेर आ ्नो खर्च टार्नु पर्दथ्यो। त्यती हुदा पनि दिदि ले त्या पैसा राख्न कहिल्यै छोड्नु भएन र धेरै पनि राख्नु हुदैनथ्यो त्यो दिन पछि मात्र २/३ रूपैया मलाई चोराउन कै लागी । त्यो माया कहिल्यौ पनि बिर्सिन योग्य छैन। एक दिन कपडा मा आईरन लगाउदा म दिदिकै छेउमा बसेको थिए। कता बाट हात पुगेछ कुन्नी मेरो हात नमज्जा ले पोलेको थियो। पोलेको त मलाई थियो तर म भन्दा चर्को स्वर ले दिदि रूनु भएको थियो। ति बचपनका याद गर्दा पनि आज मुटु भक्कानिएर आउछ अनि एक्लै रून पनि मन लाउछ। म कक्षा ४ मा पढ्दा हुदा स्कुल बाट घर आउदा सबै रीसाएर ठुस्स परेर बसेका र्‍हेछन। म त बच्चा थिए त्यो बिषयमा मतलब नै भएन। म जान्नी भएदेखि सधै हजुरबुबा संग सुत्ने गर्थे कहिल्यै पनि सुतिन होला आ ्नो ममी बुबा संग। जहिले पनि सुत्ने बेलामा पिटुनु हुन्थ्यो हजुरबुबाले मैले मरिच र मह खान नमान्दा। आखा बाट आसु निकाल्दै भए पनि खानु पर्ने हुन्थ्यो मैले मरिच र मह। आखिर मेरै शरिर स्वस्थ राख्नैको लागी त पिट्नु हुन्थ्यो नि। यति धेरै ख्याल गर्नि मान्छे त महिले कुनै जुनीमा पनि पाएको थिईन अनि पाउदैनथे पनि होला।मैले हजुरबुबा लाई बाबा भन्थे। त्यो दिन राती म बाबा को खाट मा होमर्वक गरेर बसेको थिए अनि छेउमा बाबा सुत्नु भएको थियो । निदाउनु भएको चै थिएन। मुख पनि चलेको थिएन आखा सिधा माथी छाना तिर थियो। अकस्मात बाबा को मुख बाट आवाज निक्लियो तेरो बुबा अनि ममी अब काठमान्डौ गएर बस्नी रे मिठो मिठो खानको लागी। अनि त्यो बेला मैले रूदै भनेको थिए बाबा म त यही बस्छु है तपाई संगै तिनिहरू ले त मलाई पिटछन। साच्चै भन्ने हो भने मैले सबै भन्दा बढि माया हजुरबुबा को नै गर्थे अनि हजुरबुबा ले नि मलाई गर्नुहन्थ्यो जस्तो लागदथ्यो किनकि कहि कतै मिठो कुरा खादा मलाई लुकाएर थोरै गोजीमा हालेर भए पनि ल्याईदिनु हुन्थ्यो। घरमा आएर भाई ले देख्यो भने माग्छ फेरी उता गएर खा भनेर मलाई लुकाएर खुवाउनु हुनथ्यो। दशैको बेला खसिको मासु खान नमान्दा पिटेको अझै पनि भखरै हो जस्तो लाग्छ। अझै पनि घरका कहिले काही खसिको मासु ल्याउदा त्यो दिन सम्झाउने गर्छु मैले बाबा लाई अनि बाबा हास्नु हुन्छ। बाबाको त्यती हासो देख्न पाए मलाई औले खान पनि पर्दैन होला सायद त्यति धेरै माया गर्छु अझै पनि। साच्चै आफुलाई भन्दा पनि धेरै माया गर्छु। बुबा ममी काठमान्डौ गएको केही समय पछि हामी पनि गयौ। म र मेरो भाई आफनो प्यारे हजुरबुबा हजुरआमा लाई छाडेर। कक्षा ४ सम्म पिसल्याण्ड ई स्कुलमा पढेर म कक्षा ५ पढ्नको लागी काठमान्डौ गएको थिए। काठमान्डौ स्वल्टिमोड बाट थोरै भित्र ग्रेट होटलको अगाडी एउटा सानो होटल गरेर बसेका रहेछन। त्यो बेला काठमान्डौमा सबैभन्दा अग्लो भवन नै त्यही थियो। जमिन मुनि २ तल्ला अनि जमिन माथी ८। मैले पहिलो पटक थाहा पाएको थिए कि जमिन मुनि पनि घर हुदो रहेछ। अचम्म लाग्दथ्यो जमिन मुनि पनि कसरी मान्छे बाच्थे होला भनेर।अझ भनौ हामी बस्ने कोठा पनि होटेलको तल (अन्डरग्राउण्ड) मा थियो। बाबा ले हामीलाई काठमान्डौ छोडेर २ दिन बसेर घर फर्कनु भयो। साह्रै नमज्जा लागेको थियो त्यति बेला।कक्षा ५ का लागी कालीमाटी मा रहेको जन प्रभात माध्यामिक बिद्यालय मा भर्ना गरीदिनुभयो। पहिलो दिन युनिक को बुबा ले हामीलाई स्कुल लिएर जानसभएको थियो। किनकी मेरो बुबा यु.टि.एल कम्पनि को अफिसमा सेक्युरीटि गार्ड गर्नु हुन्थ्यो भने ममी दिनभरी होटल चलाएर बस्नु हुन्थ्यो। युनिक मेरो नाता ले अंकल परे नि हामी एउटै उमेरका भएर होला साथी जस्ता थियौ। संगै खेल्थ्यौ संगै खान्थ्यौ तर पढ्ने स्कुल भने फरक थियो। उ बाने्शवर जान्थ्यो ट्याम्पो मा ५ रूपैया भाडा तिरेर तर हाम्रो स्कुल नजिकै थियो। हामी हिडेर जान्थ्यौ त्यही १५ मिनेट लाग्दथ्यो हाम्रो स्कुल पुग्नको लागी। बुबा को तलब ३००० थियो अनि ममी दिन भर होटलमा बस्नु हुन्थ्यो व्यापारका लागस अनि हामी दिनभर स्कुल अनि बिहान बेलुका खेल्न का लागी स्वल्टी होटल जान्थ्यौ। सुरू सुरू मा त मलाई स्वल्टी होतल जान डर लाग्दथ्यो किनकि म पनि कुईरे जस्तै गोरो अनि कपाल पनि कुईरो नै थियो त्यसैले उनिहरूले आफै संग राख्छन कि भन्ने डरले। बच्चा दिमाख न थियो त्यो बेला। केहि महिना पछि बुबा ममि ले धेरै चाप भयो भनेर होटल बेच्नु भयो पदम अंकल लाई। पदम अंकल नाताले हाम्रो बुबाको मामा को छोरा थिए। ३०,००० मा होटल बेचेर हामी त्यही ठाउ बाट थोरै भित्र बाफल भन्ने गाउमा बसाई सरयौ। कोठा भाडा १५०० थियो अनि बुबाको तलब ३०००। गाह्रो परेको थियो होला त्यती बेला बुबा लाई हामीलाई पढाउन अनि घर खर्च चलाउनको लागी। तै पनि जसोतसो चलेको थियो। केहि महिना पछि बुबा लाई व्यवहार चलाउन गाह्रो परेर होला सायद कोठा सर्ने निर्णय गर्नु भयो। अलि सस्तो भाडा तिर्ने कोठा खोजेर हामी सरयौ। बल्ल बल्ला त्यो काठमान्डौ मा १ हजार भाडा तिर्ने कोठा भेटियो अनि हामी त्यही बस्न थाल्यौ। बुबा ले पछि डे अनि नाईट दुबै डिउटी सुरू गर्नु भयो व्यवहार चलाउनको समस्याले। शनिबार मात्र आउनु हुन्थ्यो कोठामा। अरू दिन त बसबाको नाक मुख पनि देख्न पाईदैनथ्यो। त्यो बेला ममी ले मलाई १५ रूपैयाको म्याजिक चप्पल किनिदिदा बुबाले धेरै पैसा खर्च गरी भनेर पिटेको कहिल्यै बिर्सिदिन मैले। पाएल चप्पल आउथ्यो ५ रूपैया मा। जनै पुर्णिमा को अघिल्लो दिनमा स्कुल बाट फर्किदा रामु पौडेल, अनि देब अन्जान दाई देखेका थियौ। उहाा हरू पनि काठमान्डौ बसेर पढ्न आउनु भएको रे .................. (**क्रमश.............**)

## सामाजिक संजाल बाट

SubRat Raja feeling heartbroken
Kanchi Evangelina.
March 5 at 1:15pm

#मैले_सोचेको पनि थिएन #तिमी जस्तो
एक #सुन्दर_र_पवित्र नारीले पनि
#छेपारो ले जस्तो #रङ्ग_बदल्छौ भनेर ||||||
#सानू

Aryal Rabindra feeling sad with मगर कुसुम
8 hrs

#खुल्ला _पंख _फिजाई _आकाशमा _उडेको _चरि
झै _मुक्त _हुन _चाहानछु _म।#
#मायालु#

Navraj Chapagain Nabin
Just now

बिचरा शेरबहादुर देउवा अभागी नै हुन

Mad Loverr with C Ris T Baral and 14 others
9 hrs

मेरो पराजय पछि ,,,तिम्रो बिजयी पछि,,,
कस्की हौली तिमी ,,,,,,मेरी नभए पछि,,,,

म बेस्सरी छट्पटाउछु ,,, होला सायद ,,,,,
तिमीले दोबाटोमा ,,,,छोडेर गए,,, पछि,,,,,

दौडिदा दौडिदै थाकी सके ,,,,,म पनि,,,,
अब कति दोडिनु यार ,,,,यो समय पछि,,,,,

जीन्दगी बनाउन ,,,,,मुस्किल भइसक्यो ,,,,,
मनमा आएको भयानक,,,,, प्रलय पछि,,,,,

Sad Rose
4 hrs

यो दुखीको बहिरी,,,
रुप जति हसेको छ.||
त्यो भन्दा पनि धेरै,,,
भित्री मन रोएको छ.||
sad rose

आखिर माया त माया नै हो चाहे एकोहोरो नै किन नहोस ।

Milan Deep
February 22 at 6:26pm

धुलो उडाउदै आउने छु #इन्जिन_गाडी मा #पर्खी बस
#माया

## प्रसङ्ग मिस माडी २०१६ :



Sushma Gurung From Kalyanpur Madi
Contestant No 1
For SMS Vote
MM<Sapce>1 Send To 4243



Samjhana Paudel From Baruwa Madi
Contestant No 2
MM<Sapce> 2 Send To 4243



Shova Adhikari From Kirtanpur Madi
Contestant No 3
For SMS Vote
MM<Sapce>3 Send To 4243



Puja Pandey From Khairahani Madi
Contestant No 4
For SMS Vote
MM<Sapce>4 Send To 4243



Sarswoti Acharya From Laxminiwas Madi
Contestant No 5
For SMS Vote
MM<Sapce>5 Send To 4243



Susmita Sapkota From Kahairahani Madi
Contestant No 6
For SMS Vote
MM<Sapce>6 Send To 4243



Samjhana Subedi From Kalyanpur Madi
Contestant No 7
For SMS Vote
MM<Sapce>7 Send To 4243



Lajina Dawadi From Baruwa Madi
Contestant No 8
For SMS Vote
MM<Sapce> 8 Send To 4243



Sandhya Darai From Khairahani Madi
Contestant No 9
For SMS Vote
MM<Sapce>9 Send To 4243



Aayusha Chetri From Bramhapur Madi
Contestant No 10
For SMS Vote
MM<Sapce>10 Send To 4243

## बाल प्रतिभा उजागरमा सरू अनलाईन :



प्रेक्षा भुषाल
मा.न.पा -५ बसन्तपुर
माडी माध्यामिक विद्यालय
कक्षा - ९

धैर्यता, लगनशिलता र प्रयत्नशिलतालाई आत दउखि नै अंगाली आ^नो जिवन लाई नयाा गन्तब्य तर्फमोडन सफल :यचलष्लनक क्जयधक तजभ मबथ भनेझैं सानो उमेर देखि संचार क्षेत्र संग जोडिएको प्रेक्षा भुषाल निकै मेहनती, लगनशिल र बहु-प्रतिभा साली छन । हाल माडी माध्यामिक बिद्यालय कक्षा ९ मा पढ्दै गरेकी प्रेक्षा भुषाल जिवनमा आएका हरेक अ^ठ्यारा परिस्थिती संग नडराईकन जुट्ने र समस्याका समाधान हरू खोज्ने गर्छिन । भविष्यमा गएर समाजसेविका बन्न चाहाने उनी आ^नो जन्म भुमीको बिकास गर्न चाहान्छीन। स्कुलका हरेक क्रियाकलापमा सहभागी भई ओठमा हासो, हातमा पुरस्कार र निधारमा सफलताको प्रतिक अबिर लगाउने प्रेक्षा भुषाल हाल सामुलायीक रेडियो माडी एफ एम मा मार्यरत छिन।

उपत्यका भित्री मधेश पहाडको भाग
शैक्षिक क्षेत्र बिकास बढेद्द गयो माग
स्कुल खुल्न थाले ढिलो चाडो गरी
केटा-केटी पढ्न थाले दु:ख जिलो गरी
बुबा आमा शिक्षलाई भलुक्काएर जाने
गाजा चरेस जाड रक्सी लुकी लुकी खाने
जान लागे फिल्म हलमा स्कुलको साटो
भुल्न थाले बिद्यार्थी कर्तब्यको बाटो
अनुशाान चरीत्रलाई नभुलेमा पनि
टेवा पुग्छ राष्ट्रलाई बिकास हुन्छ अनी
बिद्याथीहुन कर्णधार यो देशको हेर
बहमल्य सकय छ नफालौ है खेर।

## ☼ गजल ☼

दिल खोली हेरे नाम रै छ उनको
मलाई पागल बनाउने काम रै छ उनको

कोठामा गई मैले सिरानी पल्टाउदा
त्याहा त चिठि को खाम रै छ उनको

नपत्याय मेरो गालामा हेर्नुहोस
किस खादा लिबिष्टिको डाम रै छ उनको

-जस्मिन शर्मा

## प्रेम गर्ने प्रेमील मनहरूको लागी एउटा डायरी :



जिवन रानाभाट
मा.न.पा ६ ब्रह्मपुरी

### प्रेममा परेपछि केटीहरुले देखाउने ५ ब्यवहार .

जव कुनै पनि केटी पुरुषसँगको सम्बन्धमा आउँछे उसमा बदलाव आउँछ । हुन त केटीलाई बुझ्न कसैले पनि सक्दैन पनि भनिन्छ तर कसैकै गर्लफ्रेण्ड बनेपछि केटीहरुमा बदलाव आउँछ । उनीहरुमा आएको बदलाव बुझ्न त्यति कठिन हुँदैन ।यस्ता बदलाव कुनै चिजसँग सम्बन्धित हुन सक्छन् । अचानक मुड परिवर्तन हुने, स्वभाव बदलिनु इत्यादि । प्रेममा परेपछि केटीमा के के ब्यवहारिक परिवर्तन आउँछन् त? .

१ निद्रा नलाग्ने

भनिन्छ प्रेममा परेपछि निद्रा भाग्छ । यस्तै हुन्छ कतिपय केटीलाई पनि । प्रेममा परेका केटीहरु अवेर सम्म जाग्छन् र प्रेमीसँग कुरा गरिरहन्छन् । एसमएस कल देखि च्याटले केटीहरुलाई राति सम्म ब्यस्त राख्छ । .

२ फोनमा लामो कुरा

प्रेममा परेपछि एउटै कुरा पनि आपसमा पटक पटक दोहोर्‍याएर गर्नु समान्य हो । केटीहरु पनि त्यस्तै गर्छन् । केटीहरुले फोनमा केटासँग लामो लामो कुरा गर्छन् । प्रेममा परेपछि एसमएस र कल जाँच गर्नु नै केटीको काम बन्छ । राति राति सम्म केटीहरु फोनमा झुण्डिरहेका हुन्छन् । .

३ रोमान्टिक गीत र फिल्म

कसैको प्रेममा परेपछि केटीहरु रोमान्टिक गीत र फिल्म मन पराउँछन् । किन भने कुनै पनि रोमान्टिक गीत आफैलाई गाएको जस्तो लाग्छ भने फिल्मका पात्र आफू नै भएको जस्तो महसुस हुन्छ । र यो कुरा प्रेमीलाई सुनाउन हतारिन्छन् । .

४ जासुस

जब प्रेममा पर्छन् केटीहरुले प्रेमीलाई बढी सिरियस्ली लिन्छन् । केटाको बारेमा हरेक कुरामा चासो लिन्छन् फेसबुक स्ट्याटस देखि प्रोफाइलमा आएका लाइक सम्म । आफ्नै प्रेमीको विषयमा कुरा गरेको सुन्न मन पराउँछन् । तर उनीहरु चाहिने भन्दा बढी नियन्त्रण गर्ने सम्म केटीहरुको बानी हुन्छ । .

५ इर्स्यालु

जब केटीहरु कुनै पुरुषको प्रेममा पर्छन् । उनीहरुलाई असुरक्षित महसुस हुन्छ । केटो अरुसँग नजिक होला आफूसँग टाढा होला कि भन्ने केटीहरुको चिन्ता हुन्छ । अरु केटीसँग प्रेमी बोल्दा त केटीहरुलाई इर्श्या नै हुन्छ ।

## माडी उपत्यकामा हालै खुलेको सुविधायुक्त होमस्टेमा पर्यटकको आकर्षण बढ्दो



जिल्लाको माडी उपत्यकामा हालै खुलेको सुविधायुक्त होमस्टेमा पर्यटकको आकर्षण बढ्दै गएको छ ।स्थापना भएको तीन महिनामा ४०० बढी पर्यटक आइसकेका छन् । होमस्टेका अध्यक्ष मोहनबहादुर पुन मगरले प्रचार प्रसार हुनसके होमस्टेमा पर्यटकको सङ्ख्या बढ्ने स्थिति रहेको बताए । यहाँ मगर समुदायको आठवटा, नेवार समुदायको दुईवटा र दराई समुदाको एउटा होमस्टे रहेका छन् । होमस्टेमा आउने पाहुनालाई आआफ्नै पोसाकमा सजिएर स्वागत गर्ने र मगर जातिको मौलिक संस्कृति देखाउने गरिएको छ ।पाहुनालाई सोरठी, सालैजु, चुड्का, ठाडोभाकामार्फत मनोरञ्जन दिइन्छ । उनीहरुलाई स्थानीयस्तरमा पाइने मौलिक खाना खुवाउने गरिएको होमस्टे सञ्चालक मनदेवी पुनले बताए । माडीमा पर्यटन प्रवद्र्धनका गर्ने मुख्य लक्ष्य राखेर होमस्टे निर्माण भएको सामाजिक अभियन्ता श्रीप्रसाद दवाडीको भनाइ छ ।माडी उपत्यका पर्यटकीय दृष्टिले महत्वपूर्ण भए पनि भौतीक पूर्वाधारको अभावमा त्यहाँ पुगेका पर्यटकलाई बसोबासको समस्या हुने गरेको थियो । हाल निर्माण भएको होमस्टेले पर्यटकको बसाइँ लम्ब्याउन सहयोग मिलेको छ । होमस्टे सञ्चालनको लागि स्थानीयलाई प्रशिक्षणसमेत दिन थालिएको छ ।होमस्टेमा प्रतिकोठाको शुल्क ४०० रुपैयाँ र सादा खानाको १०० रुपैयाँ लिने गरिएको छ । माडी संरक्षित वन्यजन्तु बाघ, गैंडा, भालु, हात्ती, जरायोलगायत चराचुरुङ्गीको अवलोकनका लागि महत्वपूर्ण क्षेत्र हो । विभिन्न धार्मिक कुण्ड तथा क्षेत्रका कारण यो क्षेत्र प्रख्यात छ । यहाँ भारतबाट समेत पर्यटक आएर पूजा गर्ने परशुराम कुण्ड रहेको छ ।निकुञ्जले सौराहा–पटिहानी र पटिहानी–माडीको पर्यटक पदमार्ग निर्माण गरेपछि पर्यटकीय गतिविधिले गति लिएको छ । सौराहाबाट सोझै पदमार्ग जोड्न पहल भइरहेको छ ।

## माडीको पर्यटन विकासमा स्थानीय पर्यटन व्यवसायीहरु सक्रिय बन्दै



माडी क्षेत्रको पर्यटन विकासका लागि स्थानिय पर्यटन व्यवसायी र सरोकारवालाहरु जागरुक बन्न थालेका छन् । चुरे श्रृङखला र सोमेश्वर डाँडाको बिचमा रहेको माडी प्राकृतिक सम्पदाले भरिपूर्ण सुन्दर पर्यटकीय गन्तव्य मानिन्छ । माडी उपत्यकामा रहेका गोद्धक, पाँचपाण्डव, शोमेश्वर गढी, परशुराम कुण्ड, जंगे दरवार, बाल्मिकी आश्रम, बैकुण्ठ ताल, सीता गुफा, माछापोखरी लगायतका पर्यटकिय महत्व बोकेका थुप्रै क्षेत्रहरु प्रचार प्रसारको अभावमा त्यसै ओझेलमा परिरहेका थिए ।माडी नगरपालिका १२ मा संचालित होम स्टे ले पनि माडी को पर्यटन क्षेत्र को बिकाश मा सहयोग पुग्ने विश्वास लिएको छ ।गोपालनगरको माछापालन पोखरीहरु माडीको उत्कृष्ट पर्यटकीय क्षेत्र मध्ये एक हो । अयोध्यापुरी क्षेत्रको बैकुण्ठ ताल र सीता गुफाको व्यवस्थापन र उक्त क्षेत्रहरुमा व्यवस्थित सडक निर्माण गर्न सके त्यस क्षेत्र मा पनि पर्यटक भित्राउन सके माडीकै बिकाश हुने स्थानि बताउछन देशमै दुर्लभ रहेका उत्तरबाहिनी नदीहरुको बाहुल्यता रहेको माडी क्षेत्र शालीग्राम पाइने कालीगण्डकी नदीपछिको दोश्रो स्थान हो । लामो समयसम्म यहाँको विकासनिर्माण र पर्यटन विकासमा स्थानीयवासी तथा सरोकारवालाहरुको ध्यान पुग्न नसकि रहेको केहि दिनहरु यता देखिएको सक्रियताले पर्यटकीय माडीको उज्यालो भविष्य चित्रित गरेको छ ।

### माया के हो ?

1."माया भनेको त्यो हो, जब ब्रेक-अप भई सक्दा पनि आफ्नो भुपु-प्रेमिकालाई जानीजानी फोन गरिन्छ अनि भनिन्छ - "ल ! गल्तिले तिम्लाई फोन लागेछ , के गर्नु बानी नै परिसकेको छ !"

2."माया भनेको त्यो हो, जब रिस उठेको बेला "I Hate You, I Hate You" भनिन्छ , अनि प्रेमिकाले मुसुक्क हास्दै भन्छे - "बाजी ठोकेर भन्छु, You can't Hate me !"

3."माया भनेको त्यो हो, जब कसैलाई घृणा गर्न चाहिन्छ तर अन्जान अन्जानमै उसलाई फेरि माया गर्न थालिन्छ !"

4."माया भनेको त्यो हो, जब कसैलाई Good Night भनेर मेसेज गरिन्छ र आफुलाई निन्द्रा लाग्दैन तब सम्म, जब सम्म उसको जवाफ आउदैन ...